


श्री सर्वोच्च अदालतमा चढाएको

सार-संक्षेपीकरण

विषयः **नेपालको संविधानको धारा १३३(२) र (३) बमोजिम परमादेश लगायत जो चाहिने आज्ञा, आदेश वा पुर्जी जारी गरीपाउँ ।**

जिल्ला ललितपुर, ललितपुर महानगरपालिका वडा नं. १६, पतको टोल वस्ने बर्ष २२ को महिला रुक्शना कपाली ....9808262699..........१ निवेदक

विरुद्ध

विपक्षी

प्रधानमन्त्री तथा मन्त्रीपरिपदको कार्यालय, सिंहदरवार, काठमाडौं समेत ..............१

१. <u>रिट निवेदनको व्यहोरा</u>ः नेपालको संविधान, सम्मानित सर्वोच्च अदालतबाट प्रतिपादित नजिर सिद्धान्त लगायत अन्तर्राष्ट्रिय मानव अधिकार कानून, मापदण्ड एवं अभ्यासहरुले प्रत्येक व्यक्तिको लैङ्गिक पहिचान स्व:अनुभूतिको आधारमा निर्धारण हुने र सोही अनुरुप व्यक्तिगत परिचय जनाउने परिचयपत्र, प्रमाणपत्र लगायतका कागजप्रमाणको आधारमा सम्मानपूर्ण जिवनयापन गर्न पाउने अधिकार प्रदान गरेको भए तापनि म यस अधिकारबाट बञ्चितिकरणमा पारिएको छु । यस सम्बन्धमा विपक्षीहरू समक्ष पटक पटक निवेदन दिंदा पनि मेरो लैङ्गिक पहिचान अनुसार मेरो व्यक्तिगत परिचय जनाउने कागजप्रमाणहरू कायम हुन सकेका छैनन् । राज्यले लैङ्गिकताको आधारमा म माथि भएका अन्यायहरुको अनुसन्धान गरि दोषीलाई जवाफदेही बनाउन सकेको छैन । यस सम्बन्धमा उपचारको लागि विपक्षी निकायहरू समक्ष पटक पटक निवेदन गर्दा समेत कुनै सुनुवाई नभएकाले बाध्य भई म र म जस्ता पारलैङ्गिक व्यक्तिहरू उपर भएको अन्यायको सम्वोधन गरी पाउँ ।



२. **संवैधानिक तथा कानूनी प्रश्नः** नेपालको संविधानको प्रस्तावनाको चौथो परिच्छेद, धारा १, १२, १६, १७, १८, २७, २८, ३१, ३३, ३५, ३७, ३८, ३९, ४२ एवं धारा १३३(२)(३) एवं अन्तर्राष्ट्रिय मानव अधिकार कानून, मापदण्ड एवं अभ्यास समेत संग सम्वन्धीत कानूनी प्रश्न ।

३. **माग गरिएको उपचार** : मलाई मेरो वास्तविक लैङ्गिक पहिचान स्थापित गर्न र सो अनुसार नागरिकता, शैक्षिक प्रमाणपत्रहरू लगायतका व्यक्तिगत परिचय जनाउने कागजप्रमाण प्राप्त गरि शिक्षाको हक, सम्मानपूर्ण जीवन यापन लगायतका अधिकारहरूको संरक्षण र प्रवर्द्धन गर्ने विषयमा मेरो व्यक्तिगत परिचय जनाउने कागजप्रमाणमा नाम 'रुक्शना कपाली' र लैङ्गिक विवरण 'महिला' कायम गर्नु र मृतलैङ्गिकता सम्वन्धिका विवरण तथा अभिलेखहरूमा गोपनीयता कायम गर्नु भनि विपक्षी प्रधानमन्त्री तथा मन्त्रीपरिषद् कार्यालय लगायतका विपक्षीहरुका नाउँमा परमादेश लगायत अन्य उपयुक्त आदेश जारी गरिपाँउ ।

सार-संक्षेपीकरण प्रस्तुतकर्ता

इति संवत् २०७७ साल चैत्र महिना १८ गते रोज ४ शुभम् ..................................... ।